# कल्पलोक

## (संयुक्त कथा संग्रह)

सम्पादक

**केशरी अम्गाई**

प्रकाशक

**हिमरश्मि साहित्यिक परिवार**

**हिमरश्मि हाई स्कुल**

तारकेश्वर-९, काठमाडौं

कल्पलोक: सिर्जनकर्मको स्तुत्य प्रयास

कल्पलोक: कल्पना क्षमताको सुन्दर नमुना

कथाक्रम:



## कल्पलोक


;k|fbsM s]z/L cDufO{
ljBfM syf
;+s/0fM k|yd @)&$ kf}if
k|sfzg ;+Vof M !))) k|t
cfj/0fM /fh]z sdf{rfo{
; jf{wsf/M lxd/lZd xfO{:shdf lglxt
sDKo6/ ;]6ckM /fh]z sdf{rfo{
k|sfzsM lxd/lZd ;flxTos kl/jf/
db|sM gfufh{g ckm;]6 k|]; , afnfh'.

# कल्पलोक:
# सिर्जनकर्मको स्तुत्य प्रयास

**लोकेन्द्र बहादुर खड्का**
**(प्रिन्सिपल)**



संस्थागत विद्यालहरूले आफ्नो क्षेत्रलाई सबै तवरले फराकिलो पार्दै लैजाने क्रममा हिमरश्मि हाई स्कुलले विद्यालयमा गुणस्तरीय शिक्षा सँगै विद्यार्थीहरूको चौतर्फी विकासमा विशेष ध्यान दिदै आएको छ ।

विद्यालयमा जीवनोपयोगी शिक्षाको लागि बृटिस काउन्सीलद्वारा देशभरीका विद्यालयहरू बिचमा International School Award (ISA) को लागि प्रतिस्पर्धा गराउँदै उत्कृष्ठ विद्यालयहरू छनोट गर्दछ । वर्षभरी विभिन्न विषयसँग सम्बन्धित परियोजनाहरू विद्यार्थीहरू, शिक्षक शिक्षिका तथा अभिभावकहरूकै प्रत्यक्ष संलग्नतामा गर्न लगाएर उत्कृष्ठ विद्यालयहरू मध्येबाट छनोट भएका विद्यालय बृटिस काउन्सीलको ISA प्राप्त विद्यालय बन्दछ । हाम्रो विद्यालय हिमरश्मि हाई स्कुल पनि यसै गरी देशभरीकै केही छनोट भएका विद्यालयहरूको लिष्टमा पर्न सफल भयो । अनि ISA को लागि गरिने धेरै खाले Project मध्ये Imagination and Creativity अन्तर्गतको यसै विद्यालयका विद्यार्थीहरूबाट कथा लेखन Project अघि बढाउँदा अहिलेको 'कल्पलोक' कथा सङ्ग्रह जन्मेको हो ।

विद्यालयमा अध्ययनरत बाल बालिकाहरूको पठन पाठनलाई

स्तरीय र व्यवहारिक अनि वैज्ञानिक र खोजमुलक बनाउने क्रममा विभिन्न रचनात्मक गतिविधिहरूलाई समय समयमा अभिभावक माझ प्रस्तुत गरिन्छ। सृजनात्मक क्षमतालाई चित्रको परिकल्पनाबाट कथाको रुपमा पाठकमाझ पस्कदा कल्पनाशील बाल मनोविज्ञानले प्रोत्साहन पाउने छ । त्यही प्रोत्साहनको सानो प्रयत्न हो यो कृति र यस सङ्ग्रहमा सङ्ग्रहित कथाहरूले यही भावलाई प्रस्तुत गरेको छ। त्यसैले यो कार्य आफैंमा स्तुत्य प्रयास हो ।

विद्यालय स्तरबाटै यो स्तरको कथा सिर्जन गर्न सक्नु, अनि त्यसलाई सही निर्देशन दिन सक्ने विषयगत नेपाली शिक्षक शिक्षिका र सम्पादन गर्ने शिक्षक हिमरश्मी हाई स्कुलका अमुल्य निधि हुन् र यस्ता हरेक कार्यको लागि सदैव विद्यालय प्रशासन सबै खाले सहयोग गर्न तयार रहिरहने छ । यस विद्यालयका सबै खाले प्रतिभावान् विद्यार्थीहरूलाई अझ उत्कृष्ठ रचना पाठक समक्ष पस्कन सदैव लागिरहन मेरो सहयोग, सदभाव र हौसला रहिरहने छ । अविकल रहुन् यस्ता सिर्जनशील कर्महरू, शुभकामना छ बाल स्रष्टाहरूलाई ।

**मितिः २०७४ पौष २४**

# कल्पलोक: कल्पना क्षमताको सुन्दर नमुना

वृटिस काउन्सीलले संचालन गरेको International School Award (ISA) मा हिमरश्मि हाई स्कुल छनोटमा परेको थियो । त्यस अन्तर्गत आन्तरिक, अन्तरविद्यालय सहकार्य र अन्तराष्ट्रिय सहकार्य अन्तर्गत विभिन्न एघारवटा परियोजना कार्य (Project ) रहेका थिए । त्यो बाहेक Imagination and Creativity अन्तर्गत थप दुईवटा परियोजना कार्य सम्पन्न गर्नु थियो । त्यही अन्तर्गतको एउटा परियोजना चित्रद्वारा कथा लेखन (Picture Promt Story Writing) परियोजना कार्य (Project work) थियो । यी कथाहरू त्यही परियोजना कार्य अन्तर्गत लेखिएका प्रतिनिधि कथाहरू हुन् ।

प्रविधिको गलत प्रयोगले वा प्रविधिको प्रभावले आजका बालबालिकाहरूमा सिर्जनशील क्षमता स्खलन हुँदै गइरहेको छ । यस सन्दर्भमा चित्रको माध्यामबाट विद्यार्थीहरूलाई विभिन्न घटनाहरूको परिकल्पना गर्न लगाई त्यसलाई कथा स्वरुपमा ढालेर उनीहरूको सिर्जनशील क्षमता प्रयोग गर्न लगाउनु यो परियोजनाको उद्देश्य थियो । यदि उनीहरूमा आत्मविश्वास जगाउने र अवसर दिने हो भने सुन्दर सिर्जना हुन सक्छन् भन्ने प्रमाण हुने यी कथाहरू ।

बालबालिकाहरूको कल्पना शक्ति ठूलाहरूमा भन्दा बढी हुन्छन् तर ठूलाहरूले बच्चाका ती कल्पनाहरूलाई गम्भीर ढङ्गले नलिइदिँदा उनीहरूको सिर्जनशीलता विस्तारै मर्दै जान्छ किनकी त्यही कल्पनाशीलता भित्र नै उनीहरूको सिर्जनशील क्षमता निहित हुन्छ । विद्यार्थीभित्रको कल्पना शक्ति र सिर्जनशीलताको प्रयास हुन यी कथाहरू ।

हामी बालबालिकाहरूको क्षमतामाथि अविश्वास गर्छौं । उनीहरूको सिर्जनाप्रति नाक खुम्च्याउने हामीजस्ताका लागि जवाफ हुन् यी सुन्दर कथाहरू । एउटै चित्रमाथि फरक फरक घटनाहरूको परिकल्पना गरेर विद्यार्थीहरूले आफ्नो कल्पनालाई कथात्मक रुप दिएका छन् यहाँ । यहाँ चित्रित हरेक घटनाहरू स्वभाविक लाग्छन जुन उनीहरूले परिकल्पना गरेका हुन् । चित्र हेरेर यति धेरै घटनाहरूको परिकल्पना गर्नु आफैमा सुन्दर सिर्जना हो । तिनै सिर्जनाको एक गुच्छा हो यो संग्रह ।

कथा लेखन परियोजनामा कक्षा ९ सेक्सन ए का ३६ जना विद्यार्थीहरू संलग्न थिए । परियोजनामा सबै विद्यार्थीहरूको सक्रिय सहभागिता थियो र सबैका परिकल्पनाहरू एक से एक उम्दा थिए । फरक थियो भने मात्र घटना वा कथा तत्वको सघनता । कसैको सिर्जनामा कथा तत्व बढी थियो र कसैकोमा कम । तिनै उम्दा परिकल्पनाहरू मध्येबाट छानिएका राम्रा भित्रका पनि राम्रा कथाहरू हुन् यी । पुस्तकको आकारको सीमाको कारण पनि सबै कथाहरू यहाँ समावेश गर्न नसकिएको हो ।

कथा छनोट गर्दा कथामा कथा तत्व, चरित्र निर्माण, परिवेश वर्णन, उद्देश्य, स्वाभाविकता र कल्पनाशीलतालाई आधार मानिएको छ । केही विद्यार्थीहरूको सुन्दर कथा हुँदा हुँदै पनि एउटै खालको प्लट भएका कथा एउटा मात्र राख्ने योजनाका कारण यहाँ समावेश हुन सकेन ।

चित्रलाई आधार मानेर घटनाको परिकल्पना गरी लेखिएका कथा भएकाले सङ्ग्रहको नाम 'कल्पलोक' राखिए पनि कथाहरू काल्पनिक मात्र छैनन् । यहाँ समाविष्ट कथाहरूमा सामाजिक यथार्थताहरूको चित्रण गरिएका छन् । विद्यार्थीहरूले बालपात्र मार्फत घटनालाई सुक्ष्म ढंगले नियालेका छन् र समाजलाई आफ्नै दृष्टिकोणले हेरेका छन् । त्यस्तै श्वैरकल्पनाको सौन्दर्य पनि कतिपय कथाहरूमा रहेका छन् । श्वैरकल्पनामा रहस्य कथा र विज्ञान कथा दुवै रहेका छन् । यहाँ चित्रित घटनाहरू विद्यार्थीहरूको कल्पना क्षमताको सुन्दर संयोजन हो जुन संयोजन कलात्मक रुपले गर्दै घटनाहरूलाई स्वभाविक र पत्यारिलो बनाएका छन् । त्यसैले यहाँ सङ्कलित कथाहरू पठनीय छन् ।

कक्षा नौका विद्यार्थीहरूकै इच्छा शक्ति र सहयोगका कारण यो प्रकाशन सम्भव भएको हो । प्रकाशन सहयोगका लागि सम्पूर्ण विद्यार्थीप्रति आभार । हामी पनि लेख्न र छाप्न सक्छौँ भनेर जुर्मुराएका यी हातहरूलाई साथ दिन सम्पूर्ण विद्यार्थी, अभिभावक र पाठकमा सादर निवेदन ।

त्यस्तै यो कथा संग्रह यस रुपमा ल्याउन हरतरले सहयोग गर्ने विद्यालय प्रशासन, कम्प्युटर गरिदिनु हुने राजेश कर्माचार्य, मुद्रण गरिदिने नागार्जुन अफसेत प्रेस प्रति आभार ।

**– केशरी अम्गाई**

# सच्चा साथीको पहिचान

–अभिषेक आचार्य



"आहा ! आज कस्तो रमाइलो दिन हगि आमा ।" रामेले आफ्नी आमालाई भन्यो ।

त्यो दिन साँच्चिकै उसलाई रमाइलो लागिरहेको थियो । विदाको दिन रामेलाई आफ्नो साथीहरूसँग भेट्न जान मन लाग्यो ।

रामे भर्खरको जवान केटो थियो । ऊ सोझो र इमान्दार थियो तर पनि उसका साथीहरूले उसलाई सधैं हेप्दथे तैपनि ऊ साथी भनेपछि हुरुक्क हुन्थ्यो ।

रामे साथीहरू खहरे खोलाको बगरमा होलान् भनी त्यतैतिर गयो । साथीहरू त्यतै रहेछन् । उनीहरू विद्यालयको बारेमा कुरा गर्न थाले । जब रामेले केही भन्थ्यो उनीहरूले उसका कुरालाई हावामा उडाइदिन्थे ।

"साथी हो हामी जवान भइ सक्यौं अब हामीले केही गर्नु पर्छ । हामीले आफ्नो भविष्य र आफ्ना आमाबाबुको बारेमा सोच्नु पर्दछ ।" रामेको छेउमा रहेको हर्कले भन्यो । उसका कुरामा सबै गम्भीर भए र हो मा हो मिलाए ।

त्यही बेला अर्को साथी श्यामेले दाउरा बेच्न जाने कुरा निकाल्यो र उसका कुरामा सबै सहमत भए ।

रामेले आफ्नी आमालाई साथीहरूसँग दाउरा बेच्न जाने कुरामा छलफल गऱ्यो । रामे आफ्नी आमाको एक्लो सन्तान थियो । उसका बाबु पनि उनीहरूलाई एक्लै छाडेर परलोक गइसकेका थिए ।



“आफ्नो ख्याल गरे र राम्रोसँग फर्क ।” भनी उसकी आमाले जान अनुमति दिइन् ।

उनीहरू सबैले एक एक भारी दाउरा सकिनसकि थाप्लामा हाले र बजारतिर लागे ।

बाटोमा एउटा ठूलो र घना जङ्गल पर्दथ्यो । आफ्ना कलिला मुटुलाई दह्रो बनाएर एकएक गर्दै त्यो जङ्गल छिचोलेर जङ्गलको पूर्वपट्टीको तलाउमा पुगे । भारीको बोझ र हिडाइको थकानको कारण उनीहरू निकै तिर्खाएका थिए । त्यसैले तलाउको पानी खाएर तिर्खा मेट्ने विचार गरे ।

तलाउमा पानी खान गएको श्यामे ‘साथी हो ! यस तलाउमा त गोही पो रहेछ, भागौं ।’ भन्दै चिच्यायो । तलाउको किनारै किनार हिडेका उनीहरू सबै त्यहाँबाट हतार हतार भागे । केही बाटो त्यही

तलाउको पानी भएर जान्थ्यो । त्यत्रो दुःख गरेर दाउरा ल्याएको हुनाले फर्कन पनि उनीहरूलाई उचित लागेन । त्यसैले उनीहरूले जोखिम मोलेर तलाउ पार गरे ।

सहरमा पुगेपछि आफूले ल्याएको दाउराको भारी बिसाएर बिक्री गर्न थाले । अरु साथीहरूको दाउरा बिक्यो तर रामेको बाँकी थियो । रामेको नबिकेको देखेर उनीहरूले रामेलाई गिज्याए तर रामेले यो सब स्वभाविक रुपमा लियो ।

खाजा खाँदा पनि उनीहरू आफू एक्लै खान्थे तर रामेलाई केही दिँदैनथे । उनीहरू रामेलाई आफ्नो पछि लागेर आएको ठान्थे । उसको दाउरा बेचेर आएको पैसालाई पनि लिइदिन्थे र उसलाई आपतकालीन समयमा मात्र सामेल गर्दथे ।

जब सबै दाउरा बिक्यो उनीहरूले अब घर  फर्कने निधो गरे । उनीहरू आउँदा खेरीको घटना सम्झेर फर्केर घर जान पनि डराइ रहेका थिए । बाटोमा आउँदा आउँदै रात पर्‍यो । उनीहरूले एउटा राँको बालेर हातमा लिए र अगाडि बढे । त्यो जङ्गलको छेउमा एउटा मसानघाट थियो । जब उनीहरू त्यहाँ पुगे उनीहरूको मन थरथर काम्न थाल्यो । तैपनि उनीहरूले हिम्मत नहारी त्यही तलाउमा पुगे ।

जब उनीहरूले त्यो तलाउमा पुगे, त्यहाँ दिउँसो देखिएको गोही देखेनन् । श्यामेको हातमा भए राँकोले तलाउ सजिलैसँग पार गरे । तर अझै बाधा टरिसकेको थिएन । त्यति नै बेला मसानघाटको लाश पोल्ने ठाउँमा रहेको ठुलो चट्टामा बसिरहेको बाघलाई हर्कले अगाडि नै देख्यो ।

सामुन्ने बाघ देखिएपछि उनीहरूलाई अब बाँचिदैन भन्ने लाग्यो । अन्त्यकालमा भगवान भरोसा भने झैं उनीहरू भगवानको नाम जप्न थाले । रामे अलि साहसी थियो । साथीहरू निकै डराएको देखेपछि उसले श्यामको हातमा रहेको राँको आफूले लियो र भन्यो,

“साथी हो, म यो राँको लिएर जान्छु र त्यो बाघको ध्यान मोड्छु । त्यतिखेर तिमीहरू यहाँबाट भाग्नू । यदि मलाई केही भयो भने मेरी आमालाई सम्झाउनू र सहयोग गर्नू ।” यति भनेर ऊ राँको लिएर अगाडि बढ्यो ।

जसलाई आफूले सधैं दुर्व्यवहार गरियो त्यही साथीले आफ्नो ज्यान जोखिममा पारेर सबैलाई बचाउन खोजेको देख्दा उनीहरूले मन थाम्न सकेनन् । ‘बरु मरे पनि सँगै मरौँला र बाँचे पनि सँगै बाँचौँला’ भनेर साथीलाई रोके ।

साथीहरूको त्यस्तो कुरा सुनेर रामे निकै खुसी भयो । भएभरको हिम्मत बटुलेर उनीहरू अगाडि बढे किनकी पछाडि पनि गोहीको डर थियो । आगोको राँको आफूतिर आएको देखेपछि बाघ एकपटक गर्जियो । रामेले हिम्मत बटुलेर राँको बेसरी हल्लायो । राँको हल्लन थालेपछि बाघ पनि अलि हच्कियो र बाटो छाडेर अर्कोतिर लम्कियो । यसरी रामेले आफ्ना साथीहरूको ज्यान बचायो र आफू उनीहरूको सच्चा साथी भएको परिचय दियो ।

# डर

–ओमप्रकाश साउद



एउटा डर लाग्दो जङ्गल जहाँ ठूला ठूला रुखहरू थिए तर मानव विहीन सुनसान थियो । जङ्गल देख्दै डर लाग्दो भएकोले त्यो जङ्गलका आस पासमा कुनै मानव बस्ती थिएन । मानिसको बस्ती त्यो डर लाग्दो जङ्गलभन्दा पाँच किलो मिटर पर थियो । त्यस गाउँको नाम 'विसाकोट' थियो । त्यो बस्तीमा धेरै मानिसहरू बसोबास गर्दथे । त्यस गाउँमा बस्ने एक परिवारमा एक दम्पती र उनीहरूका दुईवटा छोरा छोरी थिए । बुबाको नाम हरि बहादुर, छोराको दिपक र छोरीको नाम माया थियो ।

गर्मीको मौसम थियो । एक दिनको कुरा हो बेलुका बुबा र उसका दुईवटा छोरा छोरी आँगनमा बसेर साँझको चिसो हावा खाई रहेका थिए । छोरोले आफ्नो बुबासँग प्रश्न सोध्यो, "बुबा, ऊ त्यो परको जङ्गलमा जान मानिसहरू किन डराउँछन् ?"

छोराले सोधेको प्रश्नको जावफ दिदै हरि बहादुरले भने, "बाबु, त्यो जङ्गलमा भूतको बसोबास छ भनेर मान्छन् मान्छेहरू । त्यही डरले त्यहाँ नगएका हुन् ।"

छोरा र छोरी दुबैले डराउँदै भने, "हो र बुबा ! अनि त्यो भूत गाउँमा आयो भने ?"

"यहाँ आउँदैन । त्यहाँ पो बस्ती छैन र उनीहरूको राज छ । अझ त्यो जङ्गल मा कुनै वन्य जन्तुको पनि देखिदैन भन्छन् । वन भएर पनि वन्यजन्तु नदेखिनु अनौठो कुरा हो ।"



दुवै छोरा छोरी डराउँदै बुबाको नजिक सरे र भने, ”अँ बुबा, त्यो जङ्गलको बाटो पनि ढुंगाले बनेको सिँडी पो छ रे त तर कोही पनि हिड्दैनन् रे ।”

“हो बाबु, त्यो ढुङ्गाको सिँडी धेरै लामो छ ।”

त्यतिकैमा आमाले भित्रबाट भन्नुभयो, “खाना पाकिसक्यो, खाना खान आउनुहोस् ।” बाहिर बसिरहेका बुबा, छोरा र छोरी घरभित्र पसे र खाना खाएर सुत्नतिर लागे । भोलिपल्ट बिहानको घामसँगै दिपक पनि उठ्यो । हिजो साथीहरूले घुम्न जानुपर्छ भन्ने कुरा दिपकसँग पनि राखेका दिए । उसका साथी राम, रेखा, पारस र अरु धेरै थिए । साथीहरू त बिहानै उसैको घरमा पो आइपुगेछन् ।

रामले भन्यो, “ए दिपक ! कति कुम्भकर्ण झैं सुतेको, घुम्न जाने होइन ?”

“जाने त हो, तर यति चाँडै ?”

“विदाको दिन भन्दैमा सुतिरहनु पर्छ त ! चाँडै फर्कने हो नि त ।” पारसले भन्यो ।

दिपक बुबा र आमासँग अनुमति लिएर साथीहरूसँग घुम्न निस्कियो । घुम्दा घुम्दै थाकेपछि जाँदा सबै चौतारामा थकाइ मार्न बसे ।

“कस्तो मजाको दुबो । म त एकछि पल्टन्छु ?” दिपकले साथीहरूलाई भन्यो । चौतारामा रहरलाग्दो सानो चौर थियो । धेरै थाकेकोले ऊ एक छिनमा निदायो ।

केही समयपछि नजिकै बाघ कराएको आवाज आयो । दिपक निदाएको हुनाले केही पत्तो पाएन ।  डरले आत्तिएका साथीहरूले उसलाई उठाउन बिर्सिए ।

दिपकको निन्द्रा खुल्दा समय निकै बितिसकेको थियो । उसले वरिपरि हेर्‍यो साथीहरू कसैलाई देखेन । ‘साथीहरूले मलाई धोका दिएछन् ।’ उसले सोच्यो र घर जाने बाटोतिर लाग्यो । दिपकलाई बाटो पनि राम्रासँग थाहा थिएन । ‘कस्ता बद्मास साथीहरू । यसरी यो जङ्गलमा छाड्नु थियो त किन मलाई सङ्गै ल्याएका होलान् ! बाटो पनि त्यति मेसो छैन, अब कसरी यहाँबाट निस्कने होला ?’ ऊ आत्तियो । ऊ हिड्दा हिड्दै त्यो डर लाग्दो जङ्गलको बिचमा आई सकेको थियो । दिपकलाई त्यो जङ्गलको बाटो हो भन्ने कुरा थाहा थिएन । समय बितेर साँझ पर्न लागेको थियो । समय सँगै उसको मनको ढुकढुकी र डर बढ्दै थियो । विस्तारै आँखा नदेख्ने हुन थाल्यो । अब ऊ बाटो खोज्न पनि सक्दैन थियो । ‘ आज मरिने भइयो ।’ उसलाई लाग्यो । ‘मर्न नसकेका.......।’ उसले साथीहरूलाई मनमनै गाली गर्‍यो । दिपक निकै आत्तिएको थियो ।



त्यो जङ्गल सुनसान थियो । जङ्गलमा गर्मीको तापक्रम धेरै थियो । अब दिपकलाई डरले सासको फेर्न पनि गाह्रो भएजस्तो हुन थाल्यो । अब कुनै पनि हालतमा त्यही जङलमा रात बिताउनु थियो उसलाई । 'हे भगवान ! मलाई बचाऊ ।' उसले भगवान पुकार्‍यो । उसले रुखमा चढेर त्यसको कापमा बसेर रात बिताउने विचार गर्‍यो । ऊ एउटा रुखमा चढेर रुन थाल्यो । दिपकको हंसले ठाउँ छाडेको थियो । आजको रात बाँचिएला भन्ने उसलाई लागेन । नभन्दै उसले आफू बसेको ठाउँभन्दा अलि पर एउटा डर लाग्दो आगो बलेको देख्यो । यतिकैमा आफ्नो बुबाले भनेको कुरा याद आयो, 'त्यो जङ्गल भूतको खेल मैदान हो ।' ऊ भूत भूत भनेर चिच्यायो र त्यहीँ बेहोस भयो ।

बिहानको सितलतामा उसले आँखा खुल्यो । उसले आफ्नो शरीरमा हेर्‍यो । आफ्नो शरीर पसिनाले निथ्रुक्क भिजेको थियो । त्यति बिहानै पनि उसलाई निकै गर्मी लागिरहेको थियो । आफुलाई केही नभएकाले ऊ खुसी भयो र हिजो राति आगो बलेको त्यो रातो ठाउँमा गयो । उसले त्यहाँ एउटा किरा देख्यो जसले रातो रङको किरण दिइरहेको थियो । रातभर जङ्गलमा एक्लै  बस्दा पनि आफूलाई केही नभएको, आगो पनि नबलेको र निकै गर्मी भएको देखेपछि उसलाई लाग्यो- जङ्गलमा जनावर नबस्नुको कारण गर्मीको तापक्रम धेरै भएको हुनाले रहेछ । कुनै भूतको बस्ती भएको कारणले होइन   रहेछ । ऊ यस्तै सोच्दै थियो मान्छेको कल्याङ् मल्याङ् आवाज सुनियो । उसको मनमा अझै डर बाँकी थियो । मान्छे बोलेको आवाज सुनेपछि मनमा रहेको उसको डर अलि कम भयो ।

ऊ रुखबाट झरेर आवाज आएतिर लाग्यो । रातमा पनि घर नफर्केपछि गाउँलेहरू मिलेर उसैलाई खोज्न आएका रहेछन् । उसले गाउँलेहरूलाई सबै घटनासँगै आफ्नो निष्कर्ष पनि बतायो ।

# सुशान्तको अन्तरिक्ष यात्रा

–नितेश खड्का



धेरै पहिला वैज्ञानिक प्रबल र उनको टोली अन्तरिक्षमा गएका थिए । तर प्रबल र उनको टोली एक वर्षसम्म फर्केका थिएनन् । त्यसैले फेरि अर्को वैज्ञानिक सुशान्तलाई प्रबललाई खोज्न भनेर अन्तरिक्ष पठाउन लागिएको थियो ।

सुशान्त आफ्नो अन्तरिक्ष सुट लगाएर क्याबिनमा जेनेरल प्रज्वलको प्रतिक्षा गरिरहेका थिए । उनी खुसी पनि र डराएका पनि थिए । जेनेरल प्रज्वल सुशान्त भएको क्याबिन भित्र पसे । प्रज्वलले सुशान्तलाई बधाई दिदै भने, “तिमी अन्तरिक्ष यानमा एक्लै छौ ।  त्यसैले केही खराबी आएमा हामीलाई सम्पर्क गरीहाल्नू । आफ्नो मिशन पूरा गरेर आउनू ।” त्यति भन्दै प्रज्वल क्याबिनबाट बाहिर निस्किए । सुशान्त पनि आफ्नो अन्तरिक्ष यानभित्र पसेर सबै जाँचिसकेपछि उडान भर्नको लागि वैज्ञानिकहरूलाई सङ्केत गरे ।

अन्तरिक्षयान दुई हजार किलोमिटर प्रति घन्टाको रफ्तारमा उड्दै, पृथ्वीको कक्ष नाघेर अन्तरिक्षमा पुग्यो । सुशान्तले क्याविनमा राखिएको स्क्रिनमा पृथ्वीलाई फोकस गरेर अवलोकन गरे । पृथ्वी त सानो हरियो बल जस्तो देखियो । उनले एकछिन त अन्तरिक्षमा हेरिरहे । अनि प्रबल भेटिन्छ कि भनेर विभिन्न ठाउँमा रेडियो तरङ्ग मार्फत सङ्केत पठाए । उनले केही प्रकाशवर्ष पार गरिसकेका थिए तैपनि अहिलेसम्म प्रबल भेटिएको थिएन । उनी चिन्तित थिए, ‘हैन यत्रो प्रकाश वर्ष पार भइसक्यो, किन प्रबल भेटिएनन् ?’ सुशान्त मनमा कुरा खेलाउँदै थिए, अचानक केही प्रकाश वर्ष पछाडिबाट एउटा अनौठो



ग्रहबाट सङ्केत आयो । उनलाई लाग्यो यो पक्कै पनि प्रबलको सङकेत हुन्नुपर्छ । त्यसैले उनी त्यतैतिर मोडिए ।

त्यो ग्रह देखेर सुशान्त एकछिन त छक्क परे । त्यो ग्रहमा पनि पृथ्वीको जस्तै हल्का मिल्ने वातावरण थियो । यानको क्याविनमा रहेको स्क्रिनमा आगोको धुँवा उडिरहेको देखियो । उनले धुँवा आएको ठाउँमा फोकस गरेर हेरे । त्यहाँ एउटा मान्छे आगो तापेर बसिरहेको थियो । रेडियो तरङ्गको सहयोगले त्यस वरपरको वतावरणको अवलोकन गरे । स्क्रिनमा कुनै खतराको सङ्केत देखिएन । यो घटनालाई उनले पृथ्वीको सम्पर्क केन्द्रमा जानाकारी गराए र सानो यानभित्र बसेर त्यो ग्रहको आगो बलिरहेको ठाउँ नजिकै ओर्लिए । उनी त्यो मान्छेको नजिकै पुगेर सोधे, “के तपाई प्रबल हो ?”

त्यो मान्छेले जवाफ दियो, “हो, म प्रबल हुँ जो धेरै पहिला अन्तरिक्षमा आएको थिएँ । तर यानको खराबीको कारण अहिलेसम्म फर्कन पाएको छैन ।”

“त्यसो भए छिटो मेरो यानमा हिड्नुहोस् । म तपाईलाई लिन आएको हुँ ।” सुशान्तले भने ।

दुवैजना यानमा चढे । सुशान्तले प्रबललाई एउटा क्याप्सुल खान दिए ।

“तपाईं यत्रो वर्ष कसरी बाँच्नु भयो त ?” सुशान्तले यानभित्र सम्वाद सुरु गरे ।

“अन्तरिक्षमा आउँदा अन्तरिक्ष यात्रामा खाने क्याप्सुल बढाएर ल्याएका थियौं । खाना मसँग बढी थियो तर दुर्भाग्यबस म साथीहरूसँग अलग हुन पुगें । उनीहरूको अबस्था मलाई थाहा छैन



। म जहाँ एक्लिएँ त्यहाँ हाम्रालागि उपयुक्त हावापानी पनि रहेछ जसले गर्दा म बाँच्न सफल भएँ ।” प्रबलले आफ्नो कष्टकर जीवनको वर्णन गरे ।

उनीहरू कुरा गर्दा गर्दै अचानक एउटा ठूलो चट्टान आएर उनीहरूको यानमा ठोक्कियो– ‘डङ्ङ ।’

“सुशान्त ! के भयो ?” सामुन्नेको कोठामा रहनुभएको बाबाको ठूलो आवाजले सुशान्त झसङ्ग भयो । ऊ आफू सुतेको खाटमा होइन सिरक सहित भुईंमा थियो ।

# सार्थक र सोनी

–प्रकृति सुवेदी



बिहानको समय थियो घाम माथि आइसकेको थियो खोला कलकल गर्दै बगिरहेको थियो । त्यस खोलाको छेउमा एउटा ठूलो जङ्गल थियो । त्यस जङ्गल धेरै पशुपक्षीहरू मिलेर बसेका थिए । त्यही जङ्गलको छेउमा एउटा सानो घरमा सार्थक नाम गरको सानो केटो आफ्नो आमाबुबासँग खुशीका साथ बस्थ्यो ।

"आज त घरमा पनि एक्लै छु । खेल्ने साथी पनि कोही छैन । आमाबुबा पनि घरमा हुनुहुन्न, अब के गर्ने होला ?" सार्थकलाई छटपटी लाग्यो ।

बिहानै केही महत्वपूर्ण कामका कारण सार्थकको आमाबुबा बाहिर जानुभएकाले ऊ घरमा एक्लै थियो । उसको घर वरिपरि अरु कुनै घर थिएन । जङ्गलको छेउमा एउटा मात्र घर थियो जहाँ आज सार्थक एक्लै थियो ।

"आज त जङ्गलको बाटो हुँदै पल्लो गाउँमा जानुपर्‍यो । घरमा एक्लै छु के गरेर बस्ने ?" यति भन्दै सार्थक आफ्नो घरबाट निस्कियो ।

"के को आवाज हो ? यस्तो आवाज त मैले पहिला कहिल्यै सुनेको थिइन ।" अचानक जङ्गलको बाटो हिड्दै गर्दा अनौठो आवाज सुनेपछि सार्थक टक्क रोकियो र यता उता हेर्‍यो । उसको घर एकान्तमा भएकोले सानैदेखि उसलाई वनमा घुमफिर गर्ने बानी परेको थियो । वनमा उसलाई खासै डर लाग्दैनथ्यो ।




झाडीपछाडि एउटा सानो हात्तीको बच्चा घाइते अवस्थामा लडिरहेको थियो । हात्तीको बच्चा हेर्दामा निकै मायालाग्दो देखिन्थ्यो । तर उसको जिउभरी घाउचोट लागेको थियो । उसको दर्दनाक अवस्था देखेर सार्थकलाई दया लाग्यो र त्यसलाई घरमा लगेर पाल्ने निधो गर्‍यो ।

सार्थकले त्यस हात्तीको बच्चालाई लिएर आफ्नो घर गयो । उसले त्यस हात्तीको बच्चाको औषधोपचार गर्‍यो र आफूसँगै राख्यो । उसको काममा उसका बाबुआमाले पनि साथ दिए । उसले त्यस हात्तीको नाम सोनी राख्यो ।

"सोनी, तिमी र म अब सधैँ साथी बनेर बस्ने ल ?" सार्थकले भन्यो । ऊ सोनीलाई निकै माया गर्थ्यो । सोनीले कुनै जवाफ नफर्काए पनि सार्थक त्योसँग कुराकानी गर्थ्यो ।

सोनी र सार्थक मिलेर सँगै बस्थे, संगै खान्थे, संगै खेल्थे । उनीहरू एकअर्कोको मिल्ने साथी बनेका थिए एक दिन अचानक अपरिचित मानिसहरू घरमा आइपुगे ।

"घरमा को हुनुहुन्छ होला ?" उनीहरूले आवाज दिएपछि सोनी घर पछाडिबाट आँगनमा आइपुग्यो ।

सोनीलाई देखेपछि सबैले एक अर्कालाई हेर्दै भने, "हामीले पाएको सूचना सही रहेछ । यहाँ त साँच्चै एउटा हात्तीको बच्चा रहेछ ।"

बाहिरको आवाज सुनेर सार्थक पनि घरभित्रबाट निस्कयो । उनीहरूले सार्थकलाई सोधे "बाबु, यो हात्ती तिमी कहाँबाट ल्यायौ ?"

सार्थकले उनीहरूलाई सबै कुरा बतायो र भन्यो , "म त मेरो सोनी तपाईहरूलाई दिन्न ।"

सार्थकको जवाफ सुनेपछि ती मानिसहरूले भने, "बाबु, यो हात्तीलाई तिमीले यसरी घरमा राख्न मिल्दैन । ठूलो भएपछि यसलाई पाल्न पनि गाह्रो हुन्छ । हामी जनावर संरक्षण केन्द्रबाट आएका हौं । तिम्रो साथीलाई हामी राम्रोसँग माया गरेर राख्छौँ, तिमीले भेट्न आउन पनि सक्छौ ।"

सार्थकलाई धेरै सम्झाएपछि मात्र उसले सोनीलाई ती मानिसहरूसँग पठाउन राजी भयो । सार्थकले भन्यो, "वाई सोनी, म तिमीलाई कहिले काँही भेट्न आउँछु मलाई नबिर्स ल ?"

सार्थकले यस्तो भनेपछि सोनीले पनि बुझे झैं गरी ठूलो

स्वरमा करायो र आँशु झार्दै त्यहाँबाट बिदा भयो । जानेबेलामा ती मानिसहरूले सार्थकलाई एउटा खेलौना हात्ती दिए । त्यस खेलौनालाई पनि उसले सोनीलाई जस्तै माया गर्न थाल्यो । उसले त्यस खेलौना हात्तीलाई पनि सोनी भनेर बोलाउँथ्यो ।

एक दिन ऊ आफ्नो साथी अनुपको घरमा गएको थियो । उसले खेलौना हात्तीलाई पनि संगै लग्यो ।

सार्थकले अनुपको घरमा पुगेपछि अनुप घरमा नभएको कुरा थाहा पायो । त्यसपछि ऊ अनुपको बुबाको कार्यालयमा गयो र अनुप त्यहीँ होला भन्ने सोच्यो । उससँग आफ्नो खेलौना हात्ती पनि सँगै थियो ।

“ओहो ! अब के गर्ने होला ? मैले त सोनीलाई पनि संगै लिएर आएको छु ।” त्यस कार्यालयको ढोकामा ‘हात्तीलाई प्रवेश निषेध’ भनेर लेखिएको देखेर सार्थकलाई असजिलो लाग्यो ।

सार्थकले सोनीलाई बाहिरै राख्न पनि सकेन र भित्र लैजान पनि डरायो । त्यस पछि उसले मनमनै सोच्यो ‘अब के गर्ने होला ? मैले अनुपलाई कसरी भेट्ने होला ? सोनीलाई बाहिरै राखेर जानु पनि भएन ।”

सार्थकले सोनीलाई एक्लै नछोड्ने र आफू पनि अनुपलाई नभेटी घर फर्किने निर्णय गऱ्यो । उसले सोच्यो, ‘सोनीलाई कसरी एक्लै छाड्न सक्छु ?’

“यदि मेरो सोनीलाई बाहिर छोडेर म मात्र जानुपर्ने भए म पनि जान्न । सोनी र ममा के फरक छ र ? अब हामी घर गएर खेल्ने ल सोनी ?” यति भन्दै सार्थकले सोनीलाई लिएर अनुपलाई नभेटी फर्कियो ।

# रहस्यमय भऱ्याङ

**–प्रज्वल पाण्डे**



कुनै समय नेपालमा जमुनानगर नाम गरेको गाउँ थियो । त्यो गाउँ सुन्दर र वन जङ्गलले भरिएको थियो । वन जङ्गलले घेरिएको हुनाले शान्त र विशाल भए पनि त्यहाँ केही रहस्यमय कुराहरू पनि थिए । स्याउली जङ्गल पनि त्यहीँ थियो । त्यस जङ्गलमा त्यति चहल पहल थिएन । त्यस जङ्गलमा एउटा अनौठो भऱ्याङ थियो । त्यस भऱ्याङको बारेमा मान्छेहरू अनेक कुरा गर्थे ।

अमृता र उसको परिवार पनि त्यस गाउँमा बस्थे । अमृता कक्षा ९ मा अध्ययन गर्थी । ऊ अलि चञ्चले स्वभावकी थिई । उसले आफ्नो साथीभाइ र परिवारले त्यो भऱ्याङको रहस्यको कुरा गरेको सुनिरहन्थी । ऊ अलि जिज्ञासु स्वभावकी थिई । त्यसैले त्यस रहस्यको छिनोफानो गर्ने निर्णय गरी । बुझ्दै जाँदा त्यो भऱ्याङको थप रहस्य थाहा भयो । भऱ्याङको खुट्किला दिउँसो २४ र रातमा २५ वटा पुग्दो रहेछ ।

अमृताले रातमा त्यहाँ गएर यस कुराको गहन अध्ययन गरेर यसको रहस्य पत्ता लगाउने विचार गरिन् । उसले आफ्नो मिल्ने साथी अनुश्कालाई सबै कुरा बताई र सहयोगको लागि अनुरोध गरी ।

"आबुई ! रातमा त्यस्तो ठाउँमा जाने !" अनुश्का केही डराई ।

"तँ किन डराएकी ? तँ जस्तो साहसी केटी पनि यसरी डराउन मिल्छ । केही हुँदैन क्या ।" उसले आश्वस्त पार्न खोजी ।



आफूलाई साहसी केटी भनेपछि अनुश्का सँगै जान राजी भई ।

रातको समयमा उनीहरू यहाँ पुगे ।

"जङ्गली जनावर आयो भने के गर्ने नि ?" अनुश्काले भनी ।

"तँ त्यसै शङ्का गर्छेस् क्या ।" अमृताले भनी ।

उनीहरू दुबै चनाखो भएर हेरिरहेका थिए । केही बेर त्यहाँ बस्दा परबाट केही आवाज आएको सुनियो । अमृता अनुश्कालाई कोट्याउँदै भनी, "ओहो ! हेर त को हो त्यहाँ ?"

"हो, ती त डाँकू जस्ता छन् ।" अनुश्काले जवाफमा भनी ।

उनीहरू आँखा पनि नझिम्काई हेर्न थाले । तिनीहरूले पाँचचोटी टक टक गरे । त्यो भऱ्याङ खुलेर पच्चिस ओटा खुट्किलोमा परिवर्तन भयो र बन्द भयो । ती डाँकूहरू गएपछि अनुश्का र अमृता हात समाउँदै त्यहाँ नजिक गएर पाँच चोटी टकटक गरे । त्यो भऱ्याङ त्यसरी नै खुल्यो । उनीहरूले भित्र चियाएर हेरे । भित्रको दृश्यले उनीहरू छक्क परे । भित्र अनेक थरीका अनौठा सामानहरू थुपारिएको थियो । यो घटनालाई उनीहरूले पुलिसलाई बताए । त्यसपछि पुलिसले त्यो ठाउँ अवैध कारोबारको अखडा रहेको रहस्य पत्ता लगाए । यो घटनापछि अमृता र अनुश्कालाई साहसी केटीका रुपमा सबैले सम्मान गर्न थाले ।

# जेसीको अनौठो संसार

–प्रनिशा श्रेष्ठ



हाम्रो दुनियाँ भन्दा धेरै टाढा अर्को एउटा दुनियाँ थियो जहाँ सबैजना मिलेर दुःखसुख बाँडेर बस्थे । त्यहाँ राजा र रानी आफ्नो राज्य चलाउँथे । त्यो राज्यको सबै जनता राजको शासनबाट खुसी थिए । राजदरबारमा नयाँ सदस्यलाई स्वागत गर्न राजा र रानी धेरै दिनदेखि प्रतिक्षा गरिरहेका थिए ।

एक दिन रानी टोलाएर दरबारको झ्यलबाट बाहिर हेरिहेको बेला राजा नजिक गएर सोधे, "तिमीले हाम्रो भविष्यको सन्तानको बारेमा केही सोचेका त होइनौ ?"

रानीले मन्द मुस्कान दिँदै भनिन्, "मलाई त एउटा राम्ररी र असल छोरीको चाहना छ ।"

"तिमीले उसको नाम पनि सोचिसक्यौ कि क्या हो ?" राजाले जिस्क्याए ।

"अँ, जेसी, जेसी हुनेछ उसको नाम ।" भन्दै रानी मुसुक्क हाँसिन ।

केही समयपछि राजा र रानीको एउटा सन्तान भयो । सन्तानको रुपमा छोरी जन्मेकी थिई । सबै जनता खुशी थिए ।

समय क्रममा जेसी अरुभन्दा धेरै भिन्न देखिई । उसको सबै बानी छुटै किसिमको थियो । जेसी अत्यन्तै अचम्मको व्यवहार देखाउँथी ।

एक दिनको कुरा हो जेसी एक्कासी बढ्न थाली । सबैले त्यो एउटा सपना जस्तै ठाने । अर्को दिन उसको शरीरको आकार



पहिलाको भन्दा झन ठूलो भयो । हरेक दिन उसको शरीरको आकार झन ठूलो हुँदै गयो । त्यो अत्यन्तै आश्चर्यजनक घटना थियो ।

राजा रानी आफ्नी छोरी जेसीको शरीरको आकार दिन प्रतिदिन बढेको देखेर अत्यन्तै चिन्तित हुन थाले । एक दिन रानी बगैचामा सुक....सुक रुँदै गर्दा राजा त्यहाँ आइपुगे । रानी रोएको देखेर राजाले मन थाम्न सकेनन्, “प्रिय, म के गर्न सक्छु र ? मैले सकेको सबै कुरा गरिसकेँ तर केही उपाय लागेन । जनताहरू अत्यन्तै डराएका छन् । हामीले यसको समाधान जति सक्यो छिटो खोज्नु पर्छ ।”

रानीले रुँदैँ भनिन्, “मलाई अरु केही थाहा छैन, उनलाई ठिक गरिदिनू । मेरो यो अन्तिम इच्छा हो, यसपछि म हजुरसँग केही पनि माग्दिन ।”

राज्यका कुनै पनि बैद्यको उपचारले जेसी माथि काम गरेको थिएन। दिन प्रतिदिन ऊ झन बढ्दै गई। साथै जनताहरूको डरपनि बढ्दै गयो । राजाले आफ्नै मन गरुङ्गो पारेर जेसीलाई जादुको ओडारमा राख्ने निर्णय गरे जहाँ एउटा सानो ढोका थियो ।

ओढारमा राखिएपछि जेसी अत्यन्तै दुःखी र एक्ली भई। त्यो जादुको ओढारमा उसलाई चाहिने सबै चिजको व्यवस्था गरिएको थियो। उसलाई भेट्न राजा रानी कहिले काहीँ आउँथे। ऊ दिनदिनै त्यो सानो ढोकाबाट बाहिरी संसार हेर्थी ।

केही महिनापछि जेसीकी आमाले यो संसारबाट विदा लिएको नराम्रो खबर सुन्नु पर्‍यो । उसले अत्यन्तै निराश हुँदै भनी, "हे भगवान् ! किन तिमीले मलाई अरुभन्दा छुटै बनायौ। म अरुभन्दा भिन्न भएकै कारणले मैले आफ्नी आमालाई अन्तिम कालमा पनि भेट्न पाइन।" ऊ रुँदा रुँदै निदाई। तर अचानक एउटा ज्योतिले उसको ध्यान तान्यो। एउटा मान्छे उनको अगाडि देखा पर्‍यो, त्यो उसको आमाको आत्मा रहेछ।

त्यो आत्माले भन्यो, "मेरी प्यारी छोरी, मलाईं माफ गरिदेऊ । मैले तिमीलाई सुखी जीवन दिन सकिन । लाऊ यो चाबीको लप्रयोग गर।" त्यो भन्ने बितिकै आत्मा त्यहाँबाट हरायो। ऊ झल्यास्स बिउँझी र सपना हो कि विपना हो भनेर भ्रममा परी। किनकी उसको नजिकै एउटा चाबी थियो तर त्यो आत्माको आकृति त्यहाँ थिएन। त्यसपछि उसले त्यो चाबी प्रयोग गरेर ओडारको ढोका खोली र एउटा तलाउको किनारमा बसेर पानी पिउन थाली।

नजिकैको गाउँलेहरू पानी लिन तालमा आउँदा जेसीलाई देखे। सबैजना भागेर राजा कहाँ गएर उजुरी गरे, "सरकार ! हजुरको छोरी जेसी जादुको ओढारबाट निस्केर नजिकैको गाउँमा तलाउको छेउमा बसिरहेकी छिन्।"

छोरीको कारण जनता डराऊन् भन्ने उनी चाहँदैनथे । त्यसैले त्यो सुन्ने बितिकै राजाले सैनिकहरू लिएर त्यहाँ जाने निधो गरे । जेसी गाउँलेहरू भागेको थाहा पाएर राजालाई बोलाउन गएको शङ्का गर्दै त्यहाँबाट भागी ।

दिनभर जेसीलाई खोज्दा पनि नभेटेपछि राजा सैनिकको साथ दरबारमा फर्के । उनले चारैतिर झ्याली पिटाए, “कसैले जेसीलाई समातेर दरबारमा ल्याउनेलाई ठूलो उपहार दिइने छ ।”

जसीले पनि यो खबर सुनी । त्यो सुनेर उनी अत्यन्तै निराश भई र ‘आफ्नै बाबुसँग पनि लुकेर हिड्नु पर्ने यो कस्तो नियति’ भन्ने ठानेर रुन थाली । यसरी भागेर हिड्नु भन्दा बरु कुनै समाधान खोज्ने विचार गरी ।

एक बिहान सबेरै राजाको दरबारमा ठूलो बाक्सासँगै राज्यका केही गाउँलेहरू भेला भएका थिए । राज्यमा देखिएको अनौठो विषय, बस्तु वा घटनाको बारेमा पहिला राजदरबारमा खबर गर्नुपर्ने नियम अनुसार जङ्गल नजिकको नदी किनारमा भेटिएको ठूलो बाकसलाई दरबारमा पेस गरिएको थियो । सभामा भेला भएका सबै मानिसहरू त्यो बाकसको विषयमा अनेक अट्कलबाजी गरिरहेका थिए । केही भन्दै थिए “आज राजालाई ठुलो खजाना आइपरेजस्तो छ ।”

राजाले उनीहरूको जिज्ञासा मेटाउनका लागि बाकस खोल्ने अनुमति दिए । सबैतिर हल्ला हुन थाल्यो । मानिसहरू कानेखुसी गर्न थाले ।

“ल यो कसरी भयो ?” राजा आफ्नो सिंहाशनमा थचक्क बसे । त्यो बाकसभित्र अरु केही नभई जेसीको लास थियो । जेसिको लाससँगै एउटा सानो पत्र थियो । त्यसमा लेखिएको थियो–

आदरणीय बुबा,

प्रणाम ।

हजुरले मलाई त्यो डरलाग्दो अँध्यारो, सुनसान ओडारमा एक्लै छोडिदिनु भयो । मैले त्यहाँ कसैको माया र ममता पाइन । आमाबुबा भन्नेबेला आफ्नो अँध्यारो भविष्यको बारेमा सोच्न बाध्य भएँ । म अरु सरह खुल्ला आकाशमा बाँच्न चाहन्थेँ तर नियतिले मलाई त्यसरी बाँच्न दिएन । जनताहरुलाई म कुनै दुःख दिँदैनथे तर उनीहरूमसँग निकै डराए । मेरै कारणले हजुरले पनि निकै चिन्तित हुनु परेको देखेँ । हजुर एउटा जिम्मेवार बुबा नभए पनि जनताप्रतिको दायित्व निभाउने एउटा असल राजा हुनुभयो यसमा मलाई यसैमा गर्व छ । त्यसैले तपाईको चिन्ता हटाउन र जनतालाई भयमुक्त भएर बाँच्न दिन मैले यो बाटो रोजेको हुँ । अब सबै निश्चिन्त भएर बस्नुहोला । म आमालाई भेट्न जाँदै छु । विदा ।

तपाईकी अभागी छोरी

जेसी ।

पुरै सभामा आँशुको धारा बगे । सबैजनाले एक अर्कालाई हेरे । पत्र राजाको आँशुले भिजिसकेको थियो । सबैजना अत्यन्तै दुःखी भए र पछुतो माने । सोचे, ‘उनको शरीर ठुलो भए तापनि हामीलाई केही हानी गरेको थिएन... ।’

# भऱ्याङ र राजकुमार

-प्रवेश पौडेल



धेरै पहिलेको कुरा हो । काठमाडौं भन्दा धेरै टाढा एउटा छुट्टै राज्य थियो । त्यो राज्य निकै सुन्दर थियो । त्यस राज्यमा राजाको महल धेरै माथि थियो । पहाडको शिखरमा बनाइएको त्यस महलमा पुग्नको लागि निकै दिन लाग्थ्यो । महलमा जानका लागि पहाडको फेदीबाट विशाल भऱ्याङ हालिएको थियो । त्यो भऱ्याङ यति सुन्दर र विशाल थियो कि त्यहाँबाट महल पुग्न धेरै दिन लाग्थ्यो । त्यस राज्यमा एक राजाको राज चल्थ्यो । उनको ठूलो साम्राज्य थियो ।

राजाको एक मात्र राजकुमार थिए । ती निकै बुद्धीमानी र इमान्दार थिए । आफ्नो बुवाले भनेको कुराहरू अक्षरशः पालन गर्थे । ती राजकुमारलाई सबले मन पराउँथे । राजकुमार त्यही भऱ्याङ्गमा खेल्दै हुर्के ।

वर्ष बित्दै गयो । अब राजकुमारको बिहे गर्ने समय भइसकेको थियो । त्यस कुराको महल भरि चर्चा परिचर्चा हुन थाल्यो । एक दिन राजाले भने, “राजकुमार, तिम्रो बिहे गर्ने बेला भइसक्यो । जाऊ, अर्को देश गएर राजकुमारी हेर । मैले त्यहाँको राजासँग कुरा गरिसकेको छु ।” त्यसपछि राजकुमारले भने, “मेरो यहाँ धेरै काम छ बुबा ! हजुर नै गएर हेर्नुस् ।” त्यसपछि राजा आफै जाने घोषना गरे । केही सैनिक लिएर राजा घोडाको सवारीमा अर्को राज्य पुगे । त्यहाँका मानिसहरूले राजालाई भब्य रुपले स्वागत गरे । राजालाई त्यहाँको चाल चलन ठिक लाग्यो । राजकुमारी हेरेपछि राजालाई मन पऱ्यो । राजाले भने, “म वचन दिन्छु कि हजुरकी राजकुमारी मेरो

बुहारी हुनेछे ।" त्यो कुरा सुनेर अर्को राजा खुशी भए ।

त्यो दिन राजा त्यही बसे र अर्को दिन आफ्नो राज्यतर्फ लागे । आफ्नो राज्य पुग्न राजालाई पुरै ११ दिन लाग्यो । आफ्नो महलमा आएपछि राजाले भने, "राजकुमार मलाई केटी मन पऱ्यो, तिमी त्यही केटीसँग विवाह गर ।" राजकुमार आज्ञाकारी थिए । त्यसैले उनले राजाले भनेको कुरा टार्न सकेनन् र स्वीकार गरे ।

अर्को दिन राजकुमार विवाहको लागि त्यस राज्यमा गए । तर राजकुमार अर्कै राष्ट्र पुगेछन् । त्यो राष्ट्र पनि निकै सुन्दर थियो । घोडामा जाँदै गर्दा उनले एउटा कमिला समस्यामा परेको देखे । उनी तुरुन्तै घोडाबाट झरेर कमिलालाई बचाए । राजकुमारले जुन कमिलालाई बचाए त्यो कमिलाको राजा रहेछ ।

त्यस कमिलाले भन्यो, "हजुरले मेरो ज्यान जोगाएर धेरै गुन लागाउनुभएको छ । तपाईलाई केही सहयोग चाहियो भने मनदेखि मलाई सम्झनुहोस् । म तुरुन्तै आइपुग्छु ।" त्यसपछि राजकुमार खुशी हुँदै अगाडि बढे । अगाडि ठूलो राक्षस देखियो । त्यो राक्षस ठूलो आवाजमा कराइरहेको थियो । राजकुमारको टोली एकछिन त डरले विलखबन्धनमा परे । राक्षसले केही गर्ने हो कि भन्ने डर थियो उनीहरूमा । तर राक्षसले केही गर्ने सङ्केत देखाएन । त्यो देखेर सिपाहीहरूले राक्षसलाई तिरले हानेर मारौँ भने तर राजकुमारले भने, "हुन्न, एकछिन पख । त्यसको खुट्टामा हेरओ त, त्यो घाइते भएजस्तो छ ।"

त्यसको खुट्टामा राम्रोसँग हेर्दा एउटा किला पो अड्केको देखियो । त्यो किला देखेपछि राजकुमार र उनका सैनिकहरूले त्यो किला निकाल्न प्रयत्न गरे । एक दुई घण्टा लगाएर प्रायस गरेपछि मात्र त्यो किला निक्लियो । त्यसपछि त्यो ठूलो जन्तुले भन्यो, "हजुरहरूप्रति म धेरै आभारी छु । हजुरलाई केही सहयोग चाहियो भने मलाई सम्झनुहोस्, म हजुर सामु आइपुग्नेछु ।" त्यसपछि



राजकुमारको टोली त्यहाँबाट निस्किए ।

पाँच दिनपछि मात्र राजकुमार राजाको महल पुगे । राजकुमारले राजासँग बिहेको कुरा गरे । त्यसपछि राजाले भने, “हजुरले दुई सर्त पूरा गर्नु पर्नेछ । यदि दुई सर्त हजुरले पूरा गर्नुभो भने राजकुमारी हजुरको ।” त्यसपछि राजकुमारले सर्तको बारेमा सोधे । राजाले भने, “पहिलो सर्त यो हो कि त्यो कोठाभरि चिनी नै चिनी छ । त्यो हजुरले यो रातभरिमा खाएर सक्नु पर्नेछ । र दोस्रो सर्त तल तलाउमा पानी छ । त्यो पनि सक्नु पर्नेछ ।” राजकुमारले त्यो चुनौतीलाई स्वीकार गरे ।

त्यसपछि राजकुमार हुन्छ भन्दै चिनी पोखिएको कोठामा गए । चिनीको रास देखेपछि उनले अब के गर्ने होला भनेर सोचे । एकदिन पछि उनलाई कमिला र राक्षसले भनेको कुरा याद आयो । उनले कमिलालाई पहिला सम्झे । कमिलालाई राजकुमारले सम्झेको थाहा भयो र आफ्नो फौज लिएर राजकुमार भएको ठाउँमा पुग्यो । राजकुमारले आफ्नो समस्या बताए । कमिलाको लागि त्यो ठूलो समस्या थिएन । कमिलाको राजाले आफ्नो फौजलाई चिनी सार्न अह्रायो । कमिलाहरू एकदम खुशी हुँदै चिनी ओसार्न थाले । त्यसपछि उनले राक्षसलाई सम्झे । राक्षसले पनि थाहा पाएर त्यहाँ पुग्यो र किन बोलाउनुभयो भनेर सोध्यो । राजकुमारले यो तलाउको पानी सक भने । राक्षसले त्यो पानी पुरै पियो र त्यहाँबाट गयो ।

भोलिपल्ट राजाले हेर्दा चिनी र पानी दुबै सकेको देखेपछि बचन अनुसार आफ्नो राजकुमारी राजकुमारलाई सुम्पे । राजकुमार विवाहपछि आफ्नो देश फर्के । राजकुमारले बुहारीको रुपमा अर्कै केटी लिएर आएको देखेपछि राजा निकै रिसाए । उनले भने, “मैले जुन केटी भनेको थिएँ, त्यो यो केटी होइन । मैले ती राजालाई बचन

दिएको छु कि हजुरकी राजकुमारी मेरी बुहारी हुनेछे । तैंले गल्ती गरिस् छोरा, म आफ्नो वचन तोड्न सक्तिन । अब कि तैंले मैले भनेको अर्को केटीसँग विवाह गर कि घर छोडर जा ।”

पहिला राजकुमारको न्वारनका दिन ऋषिहरूले भनेका थिए कि राजकुमार यदि केही कारणले दरबार छोडेर गए भने अनिष्ट हुनेछ । राजालाई यो कुरा राम्रै हेक्का थियो । तर आफ्नो वचनको कारण आफ्नो इज्जतको कारण राजाले राजकुमारलाई दरबार छोडेर जान आग्रह गरे ।

राजाले दरबार छाड्ने आज्ञा दिएपछि राजकुमार र राजकुमारी दरबार छोडेर अर्कै ठाउँ जान लागे । त्यो राज्यबाट बाहिरिन त्यही विशाल भन्याङ झरेर जानु पर्दथ्यो । भन्याङ झर्दा झर्दै रात पर्‍यो । भन्याङको एकातिर सानो खाली गाउँ थियो । उनीहरूले त्यहीँ रात गुजारा गरे । भोलिपल्ट उनीहरू अर्कै ठाउँ गएर काम गर्न थाले ।

जब राजकुमार त्यस दरबारबाट टाढा गए, त्यहाँ राम्रो माहोल बन्न सकेन । दरबारभित्र झगडा भयो हुन थाल्यो । आन्तरिक कलहले दरबार कमजोर भयो । एकदिन अचानक अर्को देशको सैनिकहरूले त्यस राज्यमा आक्रमण गरे र सबै गरगहनाहरू लुटेर दरबारमा आगो लगाइदिए । त्यस घटनामा राजा रानी लगायत धेरैको मृत्यु भयो । केही भाग्न सफल भए ।

पच्चिस बर्ष पछि राजकुमार, उनकी श्रीमती र छोरा आफ्नो दरवार फर्के । दरवार हेर्न जाँदा त्यहाँ भन्याङ मात्र थियो । दरवार भने पुरै आगलागीले खरानी भएको थियो । त्यो दिन तिनीहरूले त्यहीँ रात काटे । राति सपनामा राजा आएर पुरै घटना भने र राजकुमारलाई निकालेकोमा पश्चाताप गरे । त्यसपछि राजकुमारले फेरि दरबार बनाउन लगाए र नयाँ राज्यको निर्माण गरे ।

# जुलीको नयाँ जीवन

–प्राप्ती रिजाल



जुली काठमाडौंमा बस्ने केटी थिई । ऊ चार वर्षको हुँदा उसको बाबाले छाडेर गएपछि आमाले पनि अर्को विवाह गर्नुभयो। ऊ केही समय त आमासँगै बसी तर नयाँ बाबुले पटक्कै माया गर्दैनथे। पछि आमाले पनि माया गर्न छाडेपछि ऊ सडकमा आई पुगी ।

ऊ अहिले एघार वर्षकी भई। उसका सबै साथीहरू सडकका नै छन्। परेको समयमा एकले अर्कोलाई ज्यान दिन तयार हुन्थे तर अधिकांश साथीहरू कुलतमा फसेका थिए। आफूजस्तै साथीहरू स्कुल गएको देख्दा ऊ पढ्न पाए हुन्थ्यो भन्ने सपना देख्थी कहिलेकाही तर त्यो उसको लागि सपनामात्र थियो। खराब साथीहरूको संगतले जुली पनि कुलतमा फसिसकेकी थिई ।

"ओइ, एकसर्को दे त ।" चुरोट तानिरहेकी साथीसँग उसले भनी ।

"आफै किन् न, किन मेरो माग्छेस् ।" उसले चुरोट दिइन ।

"ल्याङल्याङ नगर न है, छिटो दे ।" जुलीले थर्काई ।

"ल, ल, कति चाँडो रिसाएकी मोरी। ला, एकसर्को मात्र तान् है ।" उसले ठुटो भइसकेको चुरोट अघि बढाई ।

उनीहरू बाटोमा बसेर चुरोट तान्दै थिए । त्यही बाटोबाट एक जोडी युवा युवती अङ्कमाल गरेर गफ गर्दै गए ।

"ओइ ! मलाई नि एउटा केटा मिलाइदे त । ओइ ! सुनेकी



छेस् ।" जुलीको साथीले भनी ।

"के रे ! तँलाई केटा ! तँलाई किन चाहियो केटा !" जुलीले भनी ।

"ल, ल, जिस्काइ दिएको पो त ।" ऊ खित्खिताउन थाली । साथी हाँस्न थालेपछि जुलीलाई पनि हाँसो लाग्यो ।

उनीहरू चुरोट तान्दै हाँस्दै थिए । दुई जना मान्छेहरू उनीहरूलाई नै हेर्दै कुरा गर्न लागेको सुनियो । "देख्नुभो' शहर यसरी बिग्रिएको छ। स्कुल जानु पर्ने यस्ता नानीहरू यसरी कुलतमा फसेका छन् ।" एउटाले भन्यो ।

"नानीहरू, यो उमेरमा यसरी चुरोट तान्दै सडकमा बरालिनु राम्रो हो र ? यसले आफ्नै जीवनलाई बर्बाद पार्छ भन्ने तिमीहरूलाई थाहा छैन ?" अर्कोले जुली र उसको साथीलाई प्रश्न गऱ्यो ।

“ए महासय, हामी हाम्रो जीवन बाँचिरहेका छौँ । हाम्रो जीवन जस्तोसुकै होस्, तँलाई के मतलब ?” जुलीले दुवैलाई थर्काउने ढङ्गले जवाफ दिई ।

“भो, यस्तासँग बोलेर साध्य लाग्दैन ।” अर्कोले प्रश्न गर्नेलाई तानेर लग्यो ।

“खुव सिकाउने भइटोपलेको .... ।” जुलीको साथी भुत्भुताई ।

समय बित्दै गयो । उनीहरू सडकमा नै थिए । कहिलेकाही संरक्षण केन्द्रमा पुग्थे तर उनीहरू त्यहाँबाट केही दिनमा नै भाग्थे । त्यसरी भाग्ने गरे पनि जुली भने आफ्नो भविष्यबारे सोच्न थालेकी थिई । उमेरसँगै उसमा केही सुझ पनि विकास हुन थालेको थियो । स्कुल जाने केटाकेटी देखेर कहिलेकाही उसलाई लाग्थ्यो, ‘बेकार किन पढेका होलान् !’ अनि कहिलेकाही मनमा जिज्ञासा जाग्थ्यो, ‘ पढेर के भइन्छ होला ?’

एकदिन ऊ एउटा बैंकको अगाडि उभिएकी थिई । बैंकबाट पैसा पाइन्छ भन्ने उसलाई थाहा थियो तर कसरी थाहा थिएन । बैंकबाट पैसा गन्दै निस्किएका मान्छे देखेर त्यो चोर्न पाए पनि हुन्थ्यो भन्ने विचार कहिलेकाही उसको मनमा आउँथ्यो तर त्यो काम भने उसले कहिल्यै गरिन । बैंकमा मान्छेको भिड थियो । उसले यसो चियाएर हेरी । केही मान्छे राम्रा राम्रा लुगा लगाएर घुमाउने कुर्सीमा बसेर काम गरिरहेका थिए ।

“ए केटी ! के हेर्दै छेस् ।” नजिकै उभिएको सुरक्षाकर्मीले जुलीलाई हकारे ।

“ऊ त्यसरी बसेर काम गर्नलाई के गर्नुपर्छ दाइ ? राम्रो लुगा लगाएर आउनु पर्छ, हो ?” उसले भित्र काम गरिरहेका मान्छेलाई देखाउँदै सोधी ।

"हैन । धेरै पढ्नु पर्छ र जाँच दिएर नाम निकाल्नु पर्छ ।" उनले भने ।

"ए ! त्यसो भए.... ।" उसले यतिमात्र भनी ।

जुलीको कुराकानी र क्रियाकलाप नजिकै उभिएको मान्छेले नियालिरहेको थियो ।

"के तिमी त्यहाँ बस्न चाहन्छ्यौ ?" उनले अगाडि आएर सोधे ।

जुलीले नियालेर हेरी । त्यो त्यही मान्छे थियो जसलाई जुलीले कुनै दिन हप्कार पठाएकी थिई । ऊ त्यहाँबाट भाग्न खोजी र उनले रोके । उनले जुलीको बारेमा चासो देखाउँदै सबै कुरा सोधे । "के तिमीलाई पढ्ने इच्छा छ ?" उनले सोधे । बैंकको दृश्य हेरेपछि र गार्डको कुरा सुनेपछि उसले पढाइको महत्त्व बुझेकी थिई । त्यसैले अब त पढ्न पाए पनि हुन्थ्यो भन्ने लागेको थियो । तर अब यस उमेरमा पढ्न पाइन्छ भन्ने उसलाई लागेको थिएन ।

"अँ ।" उसले स्वीकृतिको टाउको हल्लाई । त्यो मान्छे सामाजिक कार्यकर्ता रहेछ । उनले त्यो उमेरको मान्छे पनि पढेर केही गर्न सक्छन् भनेर सम्झाए र पढ्ने ठाउँ भएको कुरा पनि बताए । उनैले जुलीलाई त्यो विद्यालयमा पुऱ्याइ दिए । त्यहाँ त्यस्ता मान्छेहरूलाई खाने बस्ने व्यवस्था सहित निःशुल्क शिक्षा दिइन्थ्यो । जुलीले त्यो मान्छेलाई धन्यवाद दिई ।

अब ऊ आफ्नो बिगतलाई बिर्सिएर पढ्न थाली । ऊ अहिले कक्षा दुईमा पढ्छे । त्यही घुमाउने कुर्सीमा बस्नुछ भन्दै ऊ मिहिनेत गरेर पढ्दै छे ।

# सानो ढोका

**-भरोसा दाहाल**



मिरमिरे साँझमा मेरीको आमाले भान्सा कोठाबाट आवाज दिनु भयो, “मेरी, खाना खान आऊ छोरी ।” मेरी कक्षा २ मा पढ्ने विद्यार्थी हुन् जो आफ्नो कोठामा गृहकार्य गर्दै थिइन् । आमाको पुकार पछि उनी खाना खाएर आई ओछ्यानमा एकछिनमा यसो पल्टिन् ।

“आहा ! कति राम्रो ठाउँ । चारैतिर हरियाली । सपनाको संसार जस्तो ।” सुन्दर ठाउँ देखेर उनी गद्‌गद् भइन् । उनी रमाउँदै पुतलीको पछि पछि दगुर्दै थिइन् । त्यतिकैमा उनको भेट एउटा भालुसँग भयो । त्यो भालु देखेर मेरीलाई एकछिन डरलाग्यो तर भालु आफैं मेरीसँग गफ गर्न आइपुग्यो । त्यो भालु त निकै मिलनसार र सहयोगी पो देखियो, मेरी छक्क परिन् । भालुले आफ्नो बारेमा सबै बतायो । खोलाको किनारमा आफ्नो सानो घर बनाएर बसेको भालु परिवारको दैनिक जीवन रमाइलोसँग चलिरहेको थियो । त्यस भालु परिवारमा आमाभालु, बुबाभालु र छोराभालु बस्थे । भालुले यसरी संवाद सुरु गर्‍यो–

“तपाईं को हो ?” छोरा भालुले अनौठो मानेर सोध्यो ।

“म मेरी हुँ । म घुम्दै घुम्दै यता आइपुगे । तपाईं चाहीँ को नि ?” डराएको स्वरमा मेरीले भनिन् ।

“म छोराभालु हुँ । मेरो घर यतै हो । आऊ मेरो घर जाऔं ।” छोरा भालुले मेरीलाई भन्यो ।

“भालु रे ! म त जान्न । मामुले भन्नु'भाको भालुले हामी मानिसलाई मार्छ रे । भयो म त जान्न ।” उनले आत्तिएको स्वरमा



भनिन् । भालुले मेरीसँग निकै बेर कुराकानी गर्‍यो ।

आफ्नो छोरा धेरै बेरसम्म घर नफर्कदा आमाभालु छोरा खोज्न निस्की ।

"छोरा तिमी कता छौ ? आऊ, रात पर्न लागिसक्यो ।" आमाभालुले छोरालाई बोलाई ।

उनीहरू गफ गर्दै थिए । छोरासँग मान्छे बोलिरहेको देखेर आमाभालुलाई अचम्म लाग्यो । "हैन, को हो छोरा यो मान्छे ? पहिला त देखेको थिइन उनलाई !" आमा भालुले अचम्म मानेर भनी ।

"म सहरमा बस्ने एउटा केटी हुँ । आज घुम्दा घुम्दै यता तपाईहरूको बस्तीतिर आइपुगेछु ।"

आमाभालुले पनि मेरीलाई आफ्नो घर जान अनुरोध गरी ।

बाटोमा हिडिरहेका आमाभालु र छोराभालु रमाइलो गफ गर्दै उनीहरूको घर पुगे । भालुको घर पुगेपछि मेरीलाई आमाको कुरो याद आयो । आमाले मेरीलाई भन्नु हुन्थ्यो, "नानी, भालुहरू एकदम खतरनाक हुन्छन् ।"

"तिनीहरूले जङ्गलमा बस्ने पशुपन्छीहरूलाई खान्छन्, हो ?" अनि मेरीले डराउँदै आमालाई सोधेकी थिइन् ।

"भालुहरूले पाए भने मान्छेलाई पनि मार्छन् । तिनीहरूसँग सावधान हुनुपर्छ ।" आमाले भन्नुभएको थियो ।

मेरीले आमाभालुलाई भनिन्, "तपाईहरूसँग यो घरमा बस्दिन । म मेरो घर जान्छु । मेरो आमाले भन्नुभएको भालुले त मान्छेलाई पनि खान्छ रे ।"

आमाभालुले भनी, "मेरी, तिमी हामीसँग नडराऊ । तिमी एक्लै यो ठाउँमा घुम्न आएकी, तिमी नयाँ मान्छे, यो ठाउँको बारेमा थाहा छैन । तिमी हाम्रो घरमा ढुक्क भएर बस्न सक्छौ । तिमीलाई हामीले हानी नोक्सानी पुग्ने गरी केही काम गर्ने छैनौं ।"

मेरी आफ्नो आमाले भनेको कुरा त नमान्ने मान्छे आमाभालुले भनेको कुरा मान्न के तयार हुन्थिन् ! उनी आफ्नो बाटो लागिन् ।

वनको बाटो मेरी डराउँदै हिडिरहेकी थिइन्, यतिकैमा बाघ गर्जिएको आवाज सुनियो । उनले डराउँदै कान थुनिन् । एउटा बाघ उनको बाटो छेक्न आइपुगेको थियो ।

मेरीलाई अब मरिने भइयो भन्ने लाग्यो । मेरी डराउँदै

ठुलो ठुलो स्वरमा "बचाऊ ! बचाऊ !!" भनिन् । जङ्गलको ठाउँ मान्छेहरूको बस्ती कतै थिएन ।

यतिकैमा छोराभालु मेरी चिच्याएको ठाउँमा आइपुग्यो ।

छोरा भालुलाई देखर मेरीको बाँच्ने आशा पलायो । "छोराभालु, मलाई बचाऊ ।"

छोराभालुले बाघलाई झम्ट्यो । उनीहरू दुवै एक आपसमा झगडा गर्न थाले ।

त्यही मौका छोपेर मेरी त्यहाँबाट भागिन् र आफ्नो ज्यान जोगाउन एउटा गुफामा प्रवेश गरिन् । गुफामा सबैतिर अँध्यारो छाएको थियो तर एकातिर भने सानो ज्योति बलिरहेको देखिन्थ्यो । 'त्यहाँ के रहेछ ? गएर हेर्नुपर्‍यो ।' यति सोचेर उनी ज्योति भएको ठाउँतिर लम्किइन् । उनले त्यो ज्योतिलाई नियालेर हेरिन् । उनलाई लाग्यो, 'कतै त्यो बाहिर निस्कने बाटो त हैन ?'

उनी अगाडि बढिरहिन् । एकछिनमा गुफाबाट बाहिर निस्कने सानो ढोकातर्फको बाटो देखियो ।

हिडिरहेकी मेरीले सोचिन्, 'यति सानो ढोकाबाट म कसरी निस्कने होला ? फर्कौं भने बाहिर बाघ बसेको होला । जसरी भए पनि म यही ढोकाबाट निस्कनु पर्छ ।'

उनी ढोकाबाट बाहिर निस्कने उपायको बारेमा सोचिरहेकी थिइन् । "हैन, यो केटी के गरिरहेकी छे ? स्कुल पनि जान्न कि क्या हो ?" आमाको आवाजले उनी झल्यास्स बिउँझिन् ।

ओहो ! यो त सपना पो रै'छ । बिहान भइसकेछ । मेरीले आमालाई सपनामा देखिएको सानो ढोकाको बारे बताउँदै हतार हतार स्कुल जाने तयारी गर्न थालिन् ।

# कसको दोष ?

–सुप्रिया दाहाल



"रिया, छोरी छिटो गर न । अलिकति बढी समय लगायो भने तिम्रो स्कुलमा के हुने हो ? स्कुलको पहिलो दिन, अझैं तयार भई सकेकी छैन । के गर्ने होला यसलाई ?" रियाकी ममीले भन्नुभयो ।

सेतो सर्ट, नीलो स्कर्ट, सफा सेतो मोजा, टल्किँदै गरेका काला जुत्ता, टाई बेल्ट लगाएकी रिया मुसुक्क हाँस्दै आइन् । बुटवलबाट बसाइँ सरेर रिया र उसकी ममी काठमाडौं आएका थिए । रियाको बाबा ब्रिटिस आर्मी भएकोले देश बाहिर हुनुहुन्थ्यो । आज शैक्षिक सत्रको पहिलो दिन थियो । पहिलो दिनको लागि रिया उत्साहित थिई । उसलाई नयाँ स्कुलमा भर्ना गरिएको थियो ।

"ममी, म जान्छु है ?" अंकमाल गर्दै रियाले भनी ।

"आज पहिलो दिन, स्कुलमा म पनि पुग्छु ।" आमाले उसलाई स्कुल पुऱ्याउनुभयो ।

विद्यालयमा सबैले उसलाई हेरिरहे । कक्षामा पुग्दा पनि सबैले उसलाई एकैनास हेर्दै थिए । कारण ऊ नयाँ विद्यार्थी हुनु मात्र थिएन बरु उसको अनुहार र हातमा रहेको दुबी थियो । जन्मेदेखि नै रियालाई भाइटिलिगो भएको थियो । जसले गर्दा उसको जीउको ठाउँ ठाउँमा दुबी थियो । अरु कोही ऊसँग बोल्न नचाहे पनि नोआ र जोना नाम गरेका केटी बोले । उनीहरू जुम्ल्याहा दिदी बहिनी थिए । घर गएपछि रियाले आफ्नो दिनभरको कुरा ममीलाई सुनाइन् ।

'नानीलाई फेरि पनि कसैले साथी मानेन भने ! एक्लो पो पार्छन् कि उसलाई ।' ममीले सोच्नुभयो । "आज विद्यालयको पहिलो दिन भएर हो, बिस्तारै सबै बोल्छन्, चिन्ता नगर न ।" ममीले सान्त्वना दिनुभयो ।

भोलिपल्ट बिहान स्कुलको गेटमा रियाको भेट नोआ र जोनासँग भयो । उनीहरूस्कुल भित्र गफ गर्दै जाँदै थिए । उसलाई धकेलेर हिडेको केटाले मतलब नगरी अघि बढ्यो । अचानक नोआ भुईमा लडी ।

"ए, अरुलाई धकेलेर किन हिँडेको ? माफी माग्न आउँदैन ?" उसलाई रोक्दै रियाले भनी । त्यो केटाले कुनै प्रतिक्रिया नै नदिई हिँड्यो ।

"नोआ तिम्रो घुँडामा चोट लागको छ । हिँड, औषधी लगाउन जाऊँ ।" जोनाले उसलाई उठाउँदै भनी ।

रिया र जोनाले नोआलाई स्कुलको नर्स भएको ठाउँमा पुऱ्याए र बाहिर उसलाई पर्खे ।

"नोआलाई त्यो केटाले लडाउँदा तिमीले किन केही नभनेकी जोना ?" आँखी भौँ खुम्चाउँदै रियाले भनी ।

"मैले त्यो केटाको विरोध गर्दा पहिले उसले मेरो कापी च्यातीदियो ।" जोनाले भनी ।

"त्यसको उजुरी प्रिन्सिपललाई किन गर्दैनौ त ?" रियाले सोधी ।

"त्यो केटा रोनी हो । हाम्रो प्रिन्सिपलको छोरा, उसलाई कुनै कार्वाही नै हुँदैन । कार्वाही भएपनि फेरि उस्तै । उसले उजुरी गरेको थाहा पायो भने झन् दुःख दिन्छ ।" उदास हुँदै जोनाले भनी ।

साधारण उपचार गरिसकेपछि उनीहरूक्लासमा गए तर ढिलो आएको भन्दै कुनै कुरानै नसुनी गणित शिक्षकले कक्षा बाहिरै बस्न लगाउनु भयो । स्कुलबाट घर पुगेपछि रियाले ममी खोजी तर भेटिन । ममी बिरामी भएर सुत्नु भएको रहेछ । दिन बित्दै जाँदा स्कुलमा नोआ र जोना साथी भएकाले उसको दिन रमाइलैसँग बित्न थाल्यो तर उसको दुबीको कारण रियालाई केहीले जेब्रा भनेर जिस्क्याउने गर्थे । त्यसैले उसलाई दिक्क लाग्थ्यो ।

स्कुलमा रियालाई केही बदमास केटाहरूले जिस्क्याउँथे, कहिले कक्षामा थुनिदिन्थे त कहिले लडाइदिन्थे । एक दिन उसले स्कुलमा उजुरी गरी तर चेतावनी दिएर रोनी र उसका साथीहरूलाई छोडियो ।

रियाको ममी दिन दिनै कमजोर हुँदै जानुभयो । एक दिन हस्पिटलमा भर्ना गरेपछि थाहा भयो उहाँलाई ब्लड क्यान्सर भएको रहेछ । अन्ततः रियाको विरामी आमाको अस्पतालमा मृत्यु भयो । बाबा बाहिर नै जानुपर्ने भएकोले रियालाई स्कुलको होस्टेलमा राखियो ।

जोना र नोआले पनि स्कुल फेर्ने भए । स्कुल परिवर्तन हुँदा उनीहरूखुसी देखिन्थे । “तर हामी तिमीलाई धेरै सम्झनेछौँ ।” उनीहरुले रियालाई अंकमाल गरेर भने ।

“म पनि तिमीहरूलाई सम्झनेछु ।” रियाले भनी । जोना र नोआमात्र रियाको असल साथी थिए । उनीहरूले स्कुल छाड्दा उसलाई नरमाइलो लाग्यो । तर अब उनीहरूलाई रोनीजस्ताको बुलिङको शिकार हुनु नपर्ने कुराले ऊ खुशी थिई ।

होस्टेलमा उसको मिल्ने साथी कोही थिएनन् । त्यसैले ऊ प्रायः एक्लै हुन्थी र एक्लैमा हराउन चाहन्थी । उसँग बोल्दा आफूलाई पनि जिस्क्याउने डरले कोही पनि उसको छेउछाउ पर्न चाहँदैनथे ।

मानसिक तनाबले गर्दा उसको पढाई पनि खस्कँदै थियो। शिक्षकहरले सम्झाउनु हुन्थ्यो तर ऊ आफ्नो यथार्थता बताउन सक्दिनथी। रियालाई डिप्रेसनले शिकार बनाई सकेको थियो।

रिया तनावबाट मुक्त हुनका लागि आफ्ना भित्री मनका कुरा समेटेर कविता लेख्थी। रियासँग एउटै कोठामा बस्ने साथीले रोनी र उसका साथीहरूको अगाडि राम्री हुनुका लागि रियाको कविताको कपी रोनीलाई दिई। रोनीले त्यो कपीको पाना फोटोकपी गरेर विद्यालयको ठाउँ ठाउँमा टाँसिदियो। रियाले आफ्ना कवितामा कसरी उसलाई अरुले बुलिङ गर्छन्, कसरी भोलि ऊ सफल हुनेछे आदि इत्यादि लेखेकी थिई।

“तैले कसरी आफूलाई जीत हासिल गर्छेस जस्तो लाग्छ हँ ?” एउटीले भनी। उसलाई सबैले नानाथरी भन्न थाले। अब त प्रत्येक दिन झन् झन् आफ्नो जीवनलाई उसले घृणा गर्न थाली। अति नै भएपछि एकदिन रियाले आफ्नो हातको नसा काटेर आत्महत्या गरी।

यसरी एउटा सुनौलो भविष्य बनाउने लक्ष्य राखेकी रिया बुलिङको सिकार भएकाले अन्त्यमा आफ्नै ज्यान लिन बाध्य भई। उसको आत्महत्याको घटनाले विद्यालयमा हङ्गामा त मच्चियो। यसका साथै यस घटनाको ‘दोषी को र निराकरण के ?’ भन्ने बहस पनि उठ्न थाल्यो।

# रमेश र वनमान्छे

–सेसेहाङ लिम्बु



'हैन, के सामाजिक शिक्षकले कक्षामा पहिलाको युगको बारेमा पढाएको कुरा साँचो हो त ? के पहिलाको युगको मानिस वनजङ्गल चहारेर शिकार गर्दै कन्दमुल खाएर जिविकोपार्जन गर्थे त ?' मनमा अनेक कुरा खेलाउँदै कक्षा ७ मा पढ्ने रमेश घरतिर हिडिरहेको थियो ।

"के भयो हँ तिमीलाई ?" एक्कासी पछाडिबाट आएर हरिले सोध्यो ।

एकोहोरो आफैमा हराउँदै हिडिरहेको रमेश झसङ्ग भयो ।

"हँ, हैन केही पनि छैन । कक्षामा सामाजिक शिक्षकले भनेको कुरा सम्झिएको नि ।" रमेशले भन्यो ।

"ए हो नि । अझ शिक्षकले भन्नुभएको पहिलाको मानिसहरू त ढुँगाबाट आगो बाल्थे रे, अनि कपडा पनि पातको लगाउँथे रे, कस्तो अचम्म हगि ।" हरिले भन्यो ।

"के तिमीलाई विश्वास लागेको छ ?" रमेशले सोध्यो ।

"खै के हो, के हो ?" हरिले भन्यो । ऊ मनमा कुरा खेलाउँदै घर पुग्यो ।

"ए तिमी आयौ । खाजा भान्छामा राखिदिएको छु है ।" आमाले भित्रबाटै भन्नुभयो ।

"हस आमा ।" रमेशले जवाफ त दियो तर उसलाई केही पनि खान मन लागेको थिएन ।

साँझको खाना खाएर रमेश आफ्नो कोठाको खाटमा पल्टिएर कक्षामा पढेको कुरा सम्झिएर टोलाइरहेको थियो । एक्कासि चारैतिर अँध्यारो भयो । रमेशको मनमा डर उत्पन्न हुन थाल्यो । रमेशले अलिक पर अलि अलि उज्यालो देख्यो । त्यो उज्याले विस्तारै रमेश- तिर अगाडि बढ्दै थियो । त्यो उज्यालो जति जति अगाडि



बढिरहेको थियो रमेशलाई त्यति नै डर लागिरहेको थियो । एक्कासी त्यो उज्यालोमा दुई तीन जना मानव आकारको प्राणी देखा पऱ्यो । रमेश डराएर अलि पछाडि हट्यो ।

"नडराऊ, नडराऊ, हामी तिम्रो साथी हौँ ।" शरीरभरि रौँ नै रौँ भएको, पातको कपडा लगाएको सानो मानव जस्तै देखिने प्राणीले पहेँलो दाँत देखाएर मुसुक्क हाँस्दै भन्यो । उसका पछाडि त्यस्तै पातले शरीर छोपका मानवजस्तै देखिने दुईजना प्राणीले पनि मित्रताको सहानुभूति देखाउँदै पहेँलो दाँत देखाएर हाँसे ।

रमेशको मन हलुङ्गो भएजस्तो महसुस भयो । उसलाई अब त्यति साह्रो डर लाग्न छोड्यो । ऊ त्यो अचम्मको प्राणीसँग मित्रता गाँस्न सहमत भयो । 'सायद यिनीहरू वनमान्छे होलान् ।' रमेशले अड्कल गरेर मनमनै भन्यो ।

रमेशको हात समाएर त्यो सानो अनौठो मान्छेले उसलाई एउटा बस्तीमा लगेर गयो । त्यस बस्तीमा सबै मानिसहरू उस्तै थिए– रौं नै रौँ भएका, कपाल जिङ्ग्रिङ परेका । अनि पातको कपडा लगाएका ।

"यो हाम्रो बस्ती हो । हामी यहीँ बस्छौँ ।" सानो मान्छेले भन्यो ।

रमेश छक्क पऱ्यो । तिनीहरू त आफूले कक्षामा पढेको जस्तै थिए । त्यसैले ऊ विभिन्न प्रश्न सोध्न इच्छुक थियो । रमेशले डर नमानी सोध्यो, "के तपाईंहरू यहीँ बस्नुहुन्छ ?"

"अँ, हामी यहि बस्छौँ । किन र ?" सानो मान्छेले अलिक छक्क मानेर जवाफ फर्कायो । रमेश भने आफूले पढेको जस्तै

कुराहरू देख्न पाउँदा हर्षित थियो । "के खानुहुन्छ, तपाईहरू ?" रमशेले सोध्यो ।

एउटा अलिक बुढो जस्तो देखिने वनमान्छेले भन्यो, "हामी वनजङ्गलमा कन्दमुल खोजेर र शिकार गरेर खान्छौ बाबु ।"

रमशेले मनमनै कक्षामा शिक्षकले पढाएको कुरा साँचो रहेछ भनी सोच्यो र खुशी भयो ।

रमेशको त्यस ठाउँमा धुमधामले स्वागत गरियो । सब वनमान्छेले नाचेर गाएर उसको स्वागत गरे । रमेशले शिक्षकले भनेझै ढुङ्गा रगटेर आगो बालेको पनि देख्यो र छक्क पऱ्यो ।

यसो गर्दा गर्दै मिरमिरे साँझ पर्न थाल्यो । "म अब घर जानुपर्छ आमाले मलाई खोज्दै हुनुहुन्छ होला ।" रमेशले भन्यो ।

सानो वनमान्छेले न्याउरो अनुहार लगाएर भन्यो, "अब फेरि हामीलाई भेट्न आउँछौ कि आउदैनौँ ?"

"फेरि मौका मिल्यो भने आइहाल्छ नि भेट्न ।" रमशेले निर्धक्कसँग भन्यो र बिदा लियो । रमेशलाई त्यो ठाउँ छोड्नु पर्दा एकदमै नरमाइलो लागिरहेको थियो ।

ऊ नरमाइलो मानी घर फर्कन के खोजेको थियो एक्कासी ऊ खाल्टोमा खस्यो । रमेश बिउँझियो । ऊ त खाटबाट भुईंमा खसेको पो रहेछ ।

"के भयो हँ ?" तलबाट आमाको आवाज आयो ।

"ए बाबु छिटो गर । स्कुल जान ढिलो भइसक्यो ।" आमाले बोलेको आवाज फेरि सुनियो ।

'धत् ! सपना पो रहेछ ।' रमेशले मनमनै भन्यो । जे भए पनि रमेश आफूले देखेको सपनासँग एकदम हर्षित थियो र त्यस सपनाबारे आफ्नो मित्रहरूलाई सुनाउन आतुर थियो ।

# आभार:

कथाका लागि :

–अभिषेक आचार्य
–ओमप्रकाश साउद
–नितेश खड्का
–प्रकृति सुवेदी
–प्रज्वल पाण्डे
–प्रनिसा श्रेष्ठ
–प्रवेश पौडेल
–प्राप्ती रिजाल
–भरोसा दाहाल
–सुप्रिया दाहाल
–सेसेहाङ लिम्बु

मन्तव्यका लागि :

लोकेन्द्र बहादुर खड्का
(प्रिन्सिपल)

प्रकाशन सहयोगका लागि :

–अञ्जन कोइराला
–अमृता पाण्डे
–अश्विन माझी
–आशिर्वाद शाही
–एलिन रिमाल
–पुजन मिश्र
–प्रकृती विष्ट
–प्रसन्न भट्ट
–प्रर्संन निरौला
–राजेश मैनाली
–विवेक क्षेत्री
–निराजन उपाध्याय
–निशा कार्की
–रञ्जिता तामाङ
–रूपक ढुङ्गाना
–रूविन गिरी
–सजिना वाहिङ
–सपेन क्षेत्री
–साइना पन्थी
–सागर पनेरू
–सुजन खतिवडा
–सुनिश्चित घिमिरे
–सुमन पन्त
–सुजन थापा मगर
–सुशान अधिकारी
–सुशान्त गुरूङ
र हिमरश्मि हाई स्कुल ।